# राष्ट्रिय जनगणना २०७८ मा अन्यलिङ्गीको प्रावधान सम्बन्धी
# नागरिक समाजको मागपत्र

*#परिभाषासच्याउCBS*

नेपाल संवत् ११४१ तछला ७

२०७८ जेठ १०

2021 May 24



- श्री केन्द्रिय तथ्याङ्क विभाग, फिब्वःक्व (थापाथली), यैं (काठमाडौं) ।
- श्री राष्ट्रिय योजना आयोग, सिंहदरबार, पताबुँ, यैं (काठमाडौं) ।
- श्री मन्त्रीपरिषद्, सिंहदरबार, पताबुँ, यैं (काठमाडौं) ।
- श्री राष्ट्रिय मानव अधिकार आयोग, दुरुख्यः (हरिहरभवन), यल (ललितपुर) ।

यस वर्ष हुन लागेको राष्ट्रिय जनगणना २०७८ मा केन्द्रिय तथ्याङ्क विभागले जनगणनाको प्रश्नावलीमा एउटा प्रश्नमा 'महिला, पुरुष र अन्यलिङ्गी' गरि तीनवटा विधाहरू राखेका छन् । उक्त प्रश्नावलीहरूमा धेरै प्रश्नहरू छन् जसमा लैङ्गिक वर्गिकरण सहितको तथ्याङ्क संकलन गरिनेछ, तर 'अक्सर बसोबास गर्ने व्यक्तिहरूको संख्या'मा बाहेक अरु सबै प्रश्नहरूमा केवल महिला र पुरुष मात्र उल्लेख भएको छ ।

कुनै व्यक्तिको लैङ्गिक पहिचानलाई अन्यकरण गर्ने 'अन्यलिङ्गी' शब्दावली अपशब्द एवं विभेदकारी शब्दावली हो । नेपालमा महिला र पुरुष बाहेक गैर-द्वयसांखिक (Non-Binary) र तेस्रोलिङ्गी (Third Gender) भनि पहिचान गर्ने व्यक्तिहरू छन् ।

यसका साथै केन्द्रिय तथ्याङ्क विभागले 'अन्यलिङ्गी'को परिभाषा Lesbian, Gay, Bisexual, Transgender and Intersex (LGBTI) भनेर उल्लेख गरेका छन् जुन नितान्त गलत परिभाषा हो । Lesbian, Gay र Bisexual (समयौनिक तथा द्वियौनिक व्यक्तिहरू) त लैङ्गिक पहिचान पनि होइनन् । Transgender (पारलैङ्गिक) महिलाहरू महिला र Transgender पुरुषहरू पुरुष हुन् । Intersex (अन्तरलिङ्गी) हुनु यौन विशेषता हो र अन्तरलिङ्गी व्यक्तिहरूको लैङ्गिक पहिचान महिला, पुरुष वा गैर-द्वयसांखिक हुन सक्छ ।

जनगणना जस्तो राष्ट्रिय अन्तर्राष्ट्रिय महत्वको विषयमा यस्तो त्रुटीपूर्ण परिभाषा उल्लेख हुनाले नेपालको जनगणनाले मिथ्याङ्क मात्र सृजना गर्न नभएर राज्य एवं समाजलाई समेत दिगभ्रमित पार्नेछ । विभागको यस्तो त्रुटीपूर्ण कार्यले दीर्घकालीन रूपमा हाम्रो जनसमुदायलाई अत्यन्तै प्रतिकूल असर पुर्याउने र हाम्रो आन्दोलनलाई

जरक्षना Evan

नै प्रतिगमन तर्फ धकेल्ने भएको छ । यी शब्दावलीहरूलाई सामान्य गुगल मात्र गरेपनि यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता तीन फरक-फरक विषयहरू हुन् भन्ने जानकारी पाउन सक्ने अवस्थामा तथ्याङ्क विभाग जस्तो निकायले यस्तो त्रुटीपूर्ण परिभाषा जारी गरेपछि नेपाल सरकार नै विश्वमा खिल्लिको पात्र समेत बन्न पुग्ने अवस्था छ । जुन विषय लैङ्गिकता नै होइन, त्यसलाई लैङ्गिकता अन्तर्गत मिसाएर गणना गर्नु र जो वर्ग आफूलाई महिला र पुरुष भनि नै पहिचान गर्छन् उनीहरूलाई समेत महिला र पुरुष बाहेकको व्यक्तिहरू भनि गणना गर्नाले राष्ट्रिय र विश्वव्यापी रूपमा नै यस जनगणना बारे ठूलो प्रश्न चिन्ह उठ्न सक्छ ।

तसर्थ हामी केन्द्रिय तथ्याङ्क विभागलाई यो त्रुटी यथाशीघ्र सच्याउन देहायका मागहरू राख्दछौँ ।

## हाम्रो माग :

१) जनगणनाको प्रश्नावलीमा एउटा प्रश्नमा मात्र महिला र पुरुष बाहेकको लैङ्गिक वर्गिकरण उल्लेख गरिएको छ । लैङ्गिक वर्गिकरण सहित तथ्याङ्क संकलन हुने सबै प्रश्नहरूमा महिला र पुरुषका साथै 'गैर-द्वयसांखिक र तेस्रोलिङ्गी' विधा समावेश गरिपाउँ ।

२) राष्ट्रिय जनगणना २०७८ को प्रश्नावलीमा उल्लेख प्रश्न ४.४ 'अक्सर बसोबास गर्ने व्यक्ति' अन्तर्गत प्रयुक्त 'अन्यलिङ्गी' शब्द एवं लैङ्गिक समानता तथा सामाजिक समावेशी सन्दर्भ पुस्तिका भाग ३ को ३.२ मा उल्लेख भएको 'अन्यलिङ्गी'को परिभाषा त्रुटीपूर्ण भएकाले यस परिभाषालाई सच्याइ 'गैर-द्वयसांखिक र तेस्रोलिङ्गी' शब्दावलीको प्रयोग गरि उक्त शब्दावलीलाई 'महिला र पुरुष बाहेकका लैङ्गिक पहिचान भएका व्यक्ति' भनि परिभाषित गरिपाउँ ।

३) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता (SOGIESC) सहितको तथ्याङ्कका राष्ट्रिय जनगणना २०७८ सम्पन्न भएको ५ वर्ष भित्र देहायका व्यवस्था सहित छुट्टै सर्वेक्षण गरिपाउँ :-

(क) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता तीन फरक फरक विषय भएकाले तीन फरक फरक महलमा उल्लेख गरि तथ्याङ्क संकलन गर्ने ।

(ख) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता एवं यसका विविधतासँग सम्बन्धित शब्दावलीहरू तथा तिनका परिभाषाहरू सूचिकृत गर्ने । (सन्दर्भका लागि शब्दावली तथा परिभाषा सहितको पुस्तक समावेश)

(ग) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताको तथ्याङ्क संकलनको लागि उचित, समावेशी, पहुँचयुक्त, मैत्रीपूर्ण एवं संवेदनशील विधि अपनाउनु पर्ने ।

(घ)·तथ्याङ्क संकलमा वैयक्तिक गोपनीयता, सुरक्षा र संरक्षण सुनिश्चित गर्नका लागि नीतिगत व्यवस्था गर्ने ।

(ङ) यस सर्वेक्षणका लागि यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता अधिकार सम्बन्धी कार्यरत संघ संस्था र नागरिक समाजसँग सहभागितामूलक प्रक्रिया अवलम्बन गर्ने ।

(च) यस सर्वेक्षणका लागि अन्य देशहरूमा भएका सकरात्मक अभ्यासहरूको अध्ययन गरि अवलम्बन गर्ने ।

## थप अध्ययन सामाग्री :

१) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा
https://nepalcfc.org/basic_sogiesc_nepali/

२) लैङ्गिक पहिचानको अधिकार सम्बन्धी सन् २०२० का मागपत्रहरू
https://nepalcfc.org/demandsheetbook-nep/

३) गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका: मानव अधिकारको हनन
https://nepalcfc.org/anyalingi_complaint/

४) Sexual Orientation Gender Identity and Sex Characteristics in International Human Rights Law, Second Edition, Born Free & Equal, पाना 5 & 6.
https://www.ohchr.org/Documents/Publications/Born_Free_and_Equal_WEB.pdf

५) FAQ on Health and Sexual Diversity, World Health Organization
https://www.who.int/gender-equity-rights/news/20160517-faq-on-health-and-sexual-diversity.pdf

६) UN Transgender Fact Sheet
https://www.unfe.org/wp-content/uploads/2017/05/UNFE-Transgender.pdf

७) UN Intersex Fact Sheet
https://www.unfe.org/wp-content/uploads/2017/05/UNFE-Intersex.pdf

८) UN Bisexual Fact Sheet
https://www.unfe.org/wp-content/uploads/2018/09/Bisexual_Facsheet_English.pdf

९) The Yogyakarta Principles
https://yogyakartaprinciples.org/

१०) Gender, sex, variations of sex characteristics, and sexual identity, New Zealand Census
https://www.stats.govt.nz/reports/gender-sex-variations-of-sex-characteristics-and-sexual-identity

११) Guide to collecting gender, sex, and variations of sex characteristics data, New Zealand Census

अल्पना Evan

https://www.stats.govt.nz/assets/Uploads/Methods/Statistical-standard-for-gender-sex-and-variations-of-sex-characteristics/Download-data/Guide-to-collecting-gender-sex-and-variations-of-sex-characteristics-data.pdf

१२) Statistical standard for gender, sex, and variations of sex characteristics New Zealand Census
https://www.stats.govt.nz/assets/Uploads/Methods/Statistical-standard-for-gender-sex-and-variations-of-sex-characteristics/Download-data/Statistical-standard-for-gender-sex-and-variations-of-sex-characteristics.pdf

१३) Sexual orientation (framework), Stats New Zealand
http://aria.stats.govt.nz/aria/?_ga=2.125378506.1799716139.1621066545-1426559762.1621066545#StandardView:uri=http://stats.govt.nz/cms/StatisticalStandard/aKorJMR9ZIDv3lub

१४) In Depth Review of Measuring Gender Identity, United Nations Economic Commission for Europe
https://unece.org/sites/default/files/2021-01/In-depth%20review%20of%20Measuring%20Gender%20Identity%20for%20bureau.pdf

१५) Data collection in relation to LGBTI People, European Commission
https://ec.europa.eu/newsroom/just/redirection/document/45790

१६) Guidance for questions on sex, gender identity and sexual orientation for the 2019 Census Rehearsal for the 2021 Census, UK Census
https://www.ons.gov.uk/census/censustransformationprogramme/questiondevelopment/genderidentity/guidanceforquestionsonsexgenderidentityandsexualorientationforthe2019censusrehearsalforthe2021census

१७) Scotland's Census 2021 Sex and Gender Identity Topic Report
https://www.scotlandscensus.gov.uk/documents/sex-and-gender-identity-topic-report/

**संयुक्त जारी**

रुक्शना कपाली
कार्यकारी निर्देशक
क्वयेर युथ ग्रुप (कम्पनी दर्ता नं : २४४९३५/०७७/०७८)
चनं ०४५/७७/७८
queeryouthgroup.nepal@gmail.com




इशान रेग्मी
कार्यकारी निर्देशक
क्याम्पेन फर चेन्ज (कम्पनी दर्ता नं : १६८३०१/७३/७४)
चनं २८/७७/७८
campaignforchange17@gmail.com

